# पचपन्नझ्याले दरबारको विश्वरूप



प्रा. डा. पुरूषोत्तमलोचन श्रेष्ठ

पूर्वप्रसङ्ग

पचपन्नझ्याले दरबार स्थापत्यकलाका दृष्टिले मात्र नभएर ललितकलाको एउटा सौन्दर्यपूर्ण रूपमा अभिव्यञ्जित भित्तेचित्र कलाले पनि उत्तिकै अतुल्य रही आएको छ । यसरी अनेक कलाको संयोगले अनुपम नमुना भएकै वैशिष्ट्यले यो दरबार आज पनि हाम्रो सामु हाम्रो मात्र नभएर सारा विश्वकै निधि भएर खडा छ । यदि साराले समय-समयमा समय छँदै यसको सँभार नगरिदिएको भए यो दरबार र यसका कोमल भित्ताहरूमा सजिएका विश्वश्रेणीका भित्तेचित्रहरू अनेकपल्ट गएका प्रकृतिका विनाशकारी लीला (भूकम्प, घामपानी, हावाहुरी) लगायत असंवेद्य मानवस्पर्श/क्रियाकलापका सामु टिक्न सक्ने थिएनन्, उहिल्यै गइसक्थे ।

पचपन्नझ्याले दरबार जीर्णोद्धार हुनु अघि, वि.सं.२०५८ वैशाख १८ गते । भक्तपुर नगरपालिकाले मलाई सो दरबारको अनुसन्धानात्मक ऐतिहासिक विवरण तयार पार्न अनुरोध गरेको दिन । मेरो लागि यस दरबारको अन्वेषण गर्ने अविस्मरणीय ऐतिहासिक अवसरको दिन । ...

वि.सं.२०५८ चैत्र महीना । मैले भक्तपुर नगरपालिकामा यस दरबारबारेको अनुसन्धान प्रतिवेदन प्रस्तुत गरेको दिन ।[१]

यस अन्वेषणबाट यस अघि प्रकाशमा नआएका अनेक महत्वपूर्ण नूतन कुराहरू पत्ता लाग्न आयो । तीमध्ये केही यस प्रकार छन् :

- भक्तपुरका तत्कालीन राजा भूपतीन्द्र मल्लले बनाउन लगाएको पचपन्नझ्याले दरबारको निर्माण कार्य ने.सं.८२८ (वि.सं.१७६५) मा पूरा भएको रहेछ ।[२]
- दक्षिणाभिमुख यस दरबारको १४७ वटा खोपाहरूमा अनेक नामका राग-रागिनीका स्वल्पाकृतिहरू रहेको कुरा पत्ता लाग्यो । यताबाट यो दरबार 'संगीतमय दरबार' पनि रहेछ भन्ने छक्कलाग्दो कुरा समेत थाहा हुन आयो ।
- यस दरबारको निर्माण कार्य पूरा भएपछि राजा भूपतीन्द्र मल्लले ने.सं. ८२८मा सो दरबारको कोठाका भित्ताहरूमा बनाउन लगाएका चित्रहरू भक्तपुर, याछेटोलका चित्रकार (नाम लेखिएको भागका अक्षरहरू विनष्ट भइसकेकोले अज्ञात) ले बनाइदिएका रहेछन् ।[३]
- पूर्वपश्चिम लाम्चो परेको यस दरबारको मूलकोठा ठूलो र सानो गरी दुई खण्डमा विभक्त छ जहाँ चारैतिरका भित्ता चित्रमय छन् । ती भित्तेचित्रमा देखापर्ने विषयवस्तुका आधारमा तिनलाई निम्नलिखित तीन भागमा विभक्त गर्न सकिन्छ :

- १) हात्तीखेदा+सिकार (पूर्वपट्टिको सानो कक्षको भित्तेचित्र) ।
- कृष्णचरित्रमा आधारित भित्तेचित्र (ठूलो कक्षको भित्तेचित्र) ।
- विश्वरूपको भित्तेचित्र (ठूलो कक्षको उत्तरपट्टिभित्ताको मध्यभागमा चित्रित) ।

धर्म, कला र साहित्यकै प्रसङ्गमा पनि पन्ध्रौं शताब्दीदेखि उन्नाइसौं शताब्दीको प्रथम चरणसम्मको युगलाई सांस्कृतिक पुनर्जागरण एवं प्रयोगको युग भनी मान्न सकिन्छ । धर्म, कला, संगीत, साहित्य लगायतका हरेक विधा वा क्षेत्रमा नयाँ-नयाँ प्रयोगात्मक-शैली लिएर बहुमुखी-उन्नतिले समृद्ध हुनपुगेको युग थियो त्यो । हिन्दू विषयको चित्रकलालाई नै लिऊँ । पन्ध्रौं शताब्दीदेखिको धार्मिकजीवन वैष्णववादको कृष्णभक्तिधारामा चुर्लुम्म डुब्न पुगेको थियो । त्यही कुराले चित्रकलामा पनि स्थान पाउँदै आयो । विशेषगरी वैष्णववादको कृष्णभक्ति र प्रेमको धारालाई माध्यम बनाएर लौकिक विषयलाई पनि स्थान दिएर मल्लकालीन नेपाली चित्रकला अघि बढिसकेको थियो ।

मुगल-राजपुत र राजस्थानी शैलीबाट प्रभावित हुँदै मिश्रित रूपले लौकिककला र दरबारीकला (व्यक्ति-चित्रकला, घटना/इतिहासवृत-कला, खेल, युद्ध र सिकार आदि) लाई पनि संगसंगै लिएर अघि बढिरहेको थियो त्यो युगको मल्लकालीन नेपाली चित्रकला । यसरी लौकिककला र दरबारीकलाको समिश्रणले समृद्ध हुँदै अठारौं शताब्दीको मध्यतिर उत्कर्षमा पुगेको चित्रकलाको एक उत्कृष्ट प्रयोगात्मक नमुना पचपन्नझ्याले दरबारको भित्तेचित्रमा पनि दृष्टिगोचर हुन्छ । यस दरबारको सानो कक्षको भित्तामा भूपतीन्द्र मल्ल र माणिकसेनहरूले (रातको

---

१.यस दरबारको स्थलगत अन्वेषणका क्रममा मेरा मित्र विनोदराज शर्माले सहयोग गर्नुभएको थियो । यसको निमित्त म उहाँप्रति आभारी छु।

२. विस्तृत जानकारीका लागि हेर्नुहोस् : 'अहिलेसम्म प्रचारमा नआएको पचपन्नझ्याले दरबारका चित्रमय राग रागिनी', प्राचीन नेपाल, १५७/२०६१, पृष्ठ ५८-६८ ।

३ स्मरण रहोस् ! यसले यहाँनिर भक्तपुरका जीवित देवता नवदुर्गा गणका ख्वापा (मुकुण्डो) पनि यसै टोलमा र सोही टोलका चित्रकारले बनाउने परम्परा रही आएको कुरालाई पनि सम्झाएको छ ।

जङ्गलमा) हात्ती चढी हात्तीखेदा+सिकार गरिरहेका चित्रहरू छन् । त्यसले हामीलाई खेल र सिकारका विषयवस्तु समेटिएको व्यक्तिचित्रसहितको दरबारीकलाको स्मरण गराउँछ । त्यस्तै ठूलो कक्षको चारैतिरका भित्ताहरूमा कृष्णचरित्रमा आधारित चित्रहरूले वैष्णववादको कृष्णभक्ति र प्रेम लगायत लौकिकजीवनका अनेक चित्रहरूले लौकिककलालाई सम्झाइरहेको छ । व्यक्ति चित्रकला पनि दरबारीकलाकै एक अंश हो । भक्तपुर राजदरबारको भैरवचोकको भित्तामा मुगलराजपुत शैलीमा देखापरेका भूपतीन्द्र मल्लको भव्य भित्तेचित्रले हामीलाई दरबारीकला अन्तर्गतको व्यक्ति चित्रकलाको स्पष्ट आभास गराउँछ । व्यक्ति चित्रकलाको यस्तै एक विलक्षण उदाहरण विश्वरूपको भित्तेचित्र पनि हो । किनकि यस विश्वरूपमा देखा पर्ने शिव र उनका शक्ति देवतारूपि मानिस हुन्, ती युगल जोडी अरू कोही नभएर हाम्रै भूपतीन्द्र मल्ल र उनकी रानी विश्वलक्ष्मी हुन् । यसरी धर्म+लौकिककला+दरबारीकलाको विस्मयकारी मेल र प्रयोगात्मक चित्रकलाको सफल मौलिक नमुना एकसाथ पचपन्नझ्याले दरबारको भित्तेचित्रमा दर्शनीय हुन आउँछ । अब हाम्रो मूल विषयलाई विषयान्तरमा नपारिकन विश्वरूपकै बारेमा कुरा गरौं :

विश्वरूप विवरण

अतिभङ्ग मुद्राकी शक्तिलाई आलीढासनमुद्रामा अङ्कालोमा लिई बडो सुन्दर ढङ्गले वृत्ताकार रूपमा सहस्रभुजा फैलाउँदै, त्रिकोणमय रूपमा सुमेरु जस्तै चुलिएर गएको एघार तहको शिरखण्डले सुशोभित विशाल रूपको यो विश्वरूप समग्रमा एउटा पूर्ण रूपको दैहिक-मन्दिर झैं लाग्छ । अनि यस्तो पनि प्रतीत हुन्छ मानौं चराचर जीवजगत्‌लाई आफूमा एकसाथ धारण गर्दै अवतारमय भइरहेको त्यो दैहिक मन्दिर स्वयंमा एक सम्पूर्ण-विश्व/ब्रम्हाण्ड नै पनि हो । तन्त्रको बहुअर्थीय प्रतीकवादी तान्त्रिक संसारमा यसलाई जसले जसरी हेर्छ उस्तै देख्छ र यसमा जे खोज्छ त्यही पाउँछ, त्यसैको दर्शन मिल्छ । त्यही जीवन हो । त्यही सत्+चित्+आनन्द हो र समग्रमा विश्वरूप हो । मलाई लाग्छ, यो यस विश्वरूपमा देखा पर्ने एक विलक्षण वैशिष्ट्य हो ।

विश्वरूपको यो भव्य भित्तेचित्र २ मि. १० से. मि. लम्बा र ट८ से. मि. चौडँ छ । सपाद अर्धचेहरामा प्रस्तुत यस चित्रका मुख्यदेवता विश्वरूपले आफ्नो मूल शिर पूर्वतिर अभिमुख गरेका छन् जहाँ उनको शक्ति उनको आत्मीय अङ्कालोमा निर्धक्क भएर रहेकी छिन् । महादेवको स्मरण गराउने पिङ्गलवर्ण भएका, मूल देहमा रातो वस्त्र धारण गरेका विश्वरूपको बाक्लो कालो जुङ्गा, ठुल्ठूला आँखा, सुलुत्त परेको नाक, त्रिपुण्डले सुहाएको चौडा निधारमा खुलेको त्रिनेत्र, कर्णकुण्डल, जन्त्र, कण्ठहार, सर्पहार, बाला बाजु, मुण्डमाला लगायत अनेक आभूषणले सजिएका, मूल शिरको दायाँपट्टि र बायाँपट्टि फर्केका उस्तै शिरहरू, सहस्रबाहु, तह तह परेर सुमेरू-मुकुट जस्तै देखिने एघार तहको शिरखण्ड लगायतले सुहाइरहेको विश्वरूपको व्यक्तित्व ओजस्वीपूर्ण छ । त्यसैगरी कालो धर्का भएको रातो धोतीमा सजिएकी श्वेत वर्णकी शक्तिले आत्ना प्रिय विश्वरूपलाई स्नेह र श्रद्धाभक्तिपूर्वक एकनासले हेरिरहेकी छिन् । विश्वरूपले शक्तिलाई आमाले गरिरहेको आफ्नो बायाँपट्टिको माथिल्लो बाहुको नाडीमा लगाएको सुनको बालामा श्रीभूपतिन्द्र लेखिएको छ ।



भूपतीन्द्र मल्लकी रानी विश्वलक्ष्मी । यस चित्रमा तिनको केशराशिको पार्श्वमा स्वर्णबालामा लेखिएको 'श्रीभूपतिन्द्र' स्पष्ट देखिन्छ ।
चित्र साभार : https://www.facebook.com/suresh.lakhe

व्यक्ति चित्रकला पनि दरबारीकलाकै एक अंश हो । भक्तपुर राजदरबारको भैरवचोकको भित्तामा मुगल-राजपुत शैलीमा देखापरेका भूपतीन्द्र मल्लको भव्य भित्तेचित्रले हामीलाई दरबारीकला अन्तर्गतको व्यक्ति चित्रकलाको स्पष्ट आभास गराउँछ ।

यस भित्तेचित्रको अन्वेषणका क्रममा यसका प्रायः प्रत्येक कुरा केलाउँदै जाँदा पत्ता लाग्न आएको यो महत्वपूर्ण प्राप्ति थियो । यस प्राप्तिले यो विश्वरूपलाई विश्वभरिका विश्वरूप विषयमा आधारित कलाका जुनसकै माध्यममा देखा परेका हालसम्मका विश्वरूपहरूभन्दा नितान्त बेग्लै रूपमा देखापर्न आएको बेजोड विश्वरूप हो भनी मान्न सकिन्छ । कलाका दृष्टिले यसले आजसम्मकै प्रचलित विश्वरूप-संस्कृतिमा एउटा नवीन-पद्धतिको सूत्रपात गरेको छ जसका प्रवर्त्तक भूपतीन्द्र मल्ल थिए भन्ने कुरा देखाएको छ । किनकि परम्परित विश्वरूपका मूर्ति वा चित्रहरूमा हामीले अवतारी विष्णुले कृष्णावतारमा अर्जुनलाई दिएको विश्वरूपको दर्शन पाउँदै आएका छौं । तर यस विश्वरूपमा त्यस्तो छैन । यहाँ विश्वरूपका मुख्यदेवतामा विष्णु वा कृष्ण नभएर स्वयं भूपतीन्द्र मल्ल शिव-विश्वरूपमा अवतरित भएर देखापर्न आएका छन् ४ । यसैले यो विश्वरूप विशिष्ट हुन आएको हो । विश्वरूपको यो नूतन रहस्योद्घाटनले हामीलाई यस विषयसित सम्बद्ध अन्य महत्वपूर्ण कुराको सत्य निरूपण गर्न पनि स्वतः सघाएको छ । उदाहरणको रूपमा यस विश्वरूपकी शक्तिलाई लिउँ । भूपतीन्द्र मल्लकी रानी विश्लक्ष्मी हुन् । अन्य अभिलेखीय प्रमाणबाट पनि यस कुराको पुष्टि मिल्छ । यताबाट यस विश्वरूपका भूपतीन्द्र मल्लरूपि मुख्यदेवताले अङ्गालोमा लिएका उनका शक्ति अरू कोही नभएर उनकै रानी विश्वलक्ष्मी हुन् भन्ने कुरा स्वतः जानिन्छ । यति कुरा थाहा भएपछि अब हाम्रो सामु यो कुरा पनि छर्लङ्ग हुन आउँछ कि यो शिवशक्तिरूपको विश्वरूप हो ५। जसरी विष्णु-विश्वरूपमा कृष्णले अर्जुनलाई विश्वरूपको दर्शन दिए, सोही अनुरूप यस विश्वरूपमा शिवरूपि भूपतीन्द्र मल्लले शक्तिरूपिनी विश्वलक्ष्मीलाई विश्वरूपको दर्शन दिइरहेका छन् । तान्त्रिक धर्मको विशिष्टता प्रयोगात्मक पनि रही आएको विदित हुन्छ । तन्त्रविद्यामा दीक्षित भूपतीन्द्र+विश्वलक्ष्मीको यो विलक्षणपूर्ण तान्त्रिक-प्रयोग थियो ।

यस भित्तेचित्रमा शिवशक्तिमय विश्वरूप जुन आसनमा उभिएको छ त्यसलाई प्रतीकात्मक दृष्टिमा काम, क्रोध, लोभ, मोह, अहंकार, मद, मात्सर्य, छलकपट आदि विकारहरूको आसनको रूपमा पनि मान्न सकिन्छ । त्यस्तै आसनको दायाँ बायाँ सप्त खण्ड र अष्ट खण्ड छन् जुन समुद्र र पर्वतका प्रतीक छन् । प्रत्येक खण्डमा अनेक शिर भएका देवीदेवता, नाग लगायतका अन्य जीवजन्तु छन् । सो आसनको मध्यभागमा पनि अनेक जीवजन्तु, मानिस, पुष्पलहरा र वनस्पति आदि देखाइएका छन् । आसनभागमा देखाइएको सप्तलोक, पाताल र त्यसमाथि

यस प्राप्तिले यो विश्वरूपलाई विश्वभरिका विश्वरूप विषयमा आधारित कलाका जुनसकै माध्यममा देखा परेका हालसम्मका विश्वरूपहरूभन्दा नितान्त बेग्लै रूपमा देखापर्न आएको बेजोड विश्वरूप हो भनी मान्न सकिन्छ ।

४ यस विश्वरूपको मुखाकृति भैरवचोकको भूपतीन्द्र मल्लको उस्तै सपाद्र अर्धचेहरामा प्रस्तुत महिषासुरमर्दिनी नवदुर्गाभवानीलाई विन्तीभाव प्रकट गरिरहेको भित्तेचित्र लगायत स्वर्णद्वारसामुन्नेको सालिगको मुखाकृतिसित समेत ट्वाक्कै मिल्नआएको छ। यताबाट पनि यी विश्वरूप भूपतीन्द्र मल्ल नै हुन् भन्ने कुरा निश्चित रूपले जान्न सकिएको छ।

५ महाभारतका प्रसङ्गमा कृष्णले अर्जुनलाई युद्धका लागि उनको आत्मबल बढाउन र संसार कस्तो छ भनी उनलाई सत्यबोध गराउनका निमित्त स्वयमै सम्पूर्ण विश्व समाहित गरी बिराट्रूप धारण गरेर विश्वरूपको दर्शन दिएको प्रसङ्ग प्रसिद्ध रही आएको छ। विष्णु वा उनको अवतार कृष्ण-विश्वरूप अवधारणाको मूल स्रोत भगवद्गीता हो। कृष्णले धृतराष्ट्रलाई अन्धो भएता पनि मनको आँखा दिएर विश्वरूपको प्रथम दर्शन गराउन खोजेका थिए तर उनमा चेत नआएपछि दोस्रोपल्टमा अर्जुनले विश्वरूपको दर्शन पाएका थिए।

विश्वरूपका अनेक भेद प्रचलित छन्। अनेक हातखुट्टा भएका बहुशिरधारी देवताहरू पनि 'विश्वरूप' सदृश देखापर्छन्। त्रिमूर्ति, दश शिर भएका रावण, अर्धनारीश्वर लगायत हनुमानमा पनि विश्वरूपको विशिष्टता बोध हुन्छ। विष्णु विश्वरूप होस् वा शिव विश्वरूप ! कृष्ण होस् वा काली, विष्णु होस् वा महाकाल, सबै देवताहरू अन्त तः देवाधिदेव महादेव शिवकै अवतारका रूपमा देखापर्छन्।

-http://en.wikipedia.org/Vishvarupa_ हिन्दूहरूमा विश्वरूप प्रसिद्ध रहे जस्तै बौद्धहरूमा सहस्रभुज लोकेश्वर उत्तिकै प्रसिद्ध छन्।

विष्णु विश्वरूपको स्रोत भगवद्गीता रहे जस्तै शिव विश्वरूपको मूल स्रोत शिवपुराण रहेको देखिन्छ। शिव विश्वरूपमा, शिवले दैत्यगुरु शुक्राचार्यको घमण्ड तोडी उनलाई ब्रम्हज्ञानको बोध गराउन सर्वप्रथम विश्वरूपको दर्शन दिएका थिए। शिव विश्वरूप शिवशक्त्यात्मक छ। जुङ्गालाई पुरुषत्वको प्रतीक मानिन्छ जुन शिव विश्वरूपले पालेका छन्। विष्णु विश्वरूपमा जुङ्गा देखिँदैन। शिव विश्वरूप मुण्डमालाधारी हुन् भने विष्णु विश्वरूप कमलपुष्पमालाधारी हुन्। यसरी यी केही सामान्य भिन्न-भिन्न विशेषताहरूतिर दृष्टिगत गर्दा पनि यस भित्तेचित्रका विश्वरूप शैव परम्पराको शिवशक्तिमय विश्वरूप हो भन्ने कुरा बोध हुन्छ।

शिवशक्ति स्वरूपले रहेका भूपतीन्द्र मल्ल+विश्वलक्ष्मी लगायत बहुशिरखण्डले समग्रमा 'तीन लोक चौध भुवन' अर्थात् सम्पूर्ण विश्वको दर्शन मिल्छ ।६

भूपतीन्द्र मल्ल+विश्वलक्ष्मीरूपि शिवशक्त्यात्मक यस विश्वरूपको पहिलो खण्डको लहरमा, मध्यभागमा भूपतीन्द्र मल्लको बायाँतिर मुख गरेको मूल शिर छ । यो शिर अन्य शिरहरूका तुलनामा भव्य छ । सो शिरको लहरै बायाँतिर सातवटा र दायाँतिर पनि सातवटै गरी रक्त, श्वेत, श्याम, पीत, हरित आदि अनेक वर्णका सबै शिरहरू भूपतीन्द्र मल्लकै मुखाकृतिका छन् । यसदेखि माथिका मानवशिरहरू पनि भूपतीन्द्र मल्लकै छन् । सबै शिरहरूले स्वर्णमुकुट लगाएका छन् ।

सुमेरू पर्वतरूपि एघार तहको शिरखण्डमा तेस्रो तहदेखि माथिका शिरखण्डहरू ठम्याउन अब गाह्रो भइसकेको छ ७। समग्रमा मानवशिरका अतिरिक्त हात्ती, शार्दूल र अन्य जीवका शिर लगायत पंचमुखी हनुमानका शिर ८ त्यहाँ देखापर्छन् । एक आपसमा बेह्रिएका सेता नागहरूको सुरक्षात्मक घेरामा सुमेरूरूपि त्रिकोणमय शिरखण्ड भव्य देखिन्छ ।

शिरदेखि पाउसम्म थरी थरीका वस्त्राभूषणले ढाकेर चौपट्ट खुलेका विश्वरूपरूपि भूपतीन्द्र मल्लले कालमुण्डमाला, नरमुण्डमाला र अनेक पत्र भएका मालासहित सेतो जन्त्रमाला पनि लगाएका छन् । त्यसको मुनि शिव महाकालको तीन नेत्र पनि देखापर्छ । त्यस मध्येको माथिल्लो नेत्रमा नागासनमा एकजोडी देवदेवी बसेका छन् । यो सूक्ष्मचित्र हो । यस्तै सूक्ष्मचित्रहरूले पनि यस विश्वरूपलाई अतुलनीय तुल्याएको छ । सर्सर्ती हेरेर त यस भित्तेचित्रमा बहुशिरधारी शक्ति सहितका देवता मात्र देखिन्छ । उनका हजारौं हातहरू र बहु शिरखण्ड पनि हाम्रो सामुन्नेमा एकै ढिक्का भएर हराउन पुग्छन् । विश्वरूपमा देखापर्ने एउटा अनौठो विशेषता यो पनि हो । यो

*त्यसमध्येको माथिल्लो नेत्रमा नागासनमा एकजोडी देवदेवी बसेका छन् । यो सूक्ष्मचित्र हो । यस्तै सूक्ष्मचित्रहरूले पनि यस विश्वरूपलाई अतुलनीय तुल्याएको छ । सर्सर्ती हेरेर त यस भित्तेचित्रमा बहुशिरधारी शक्तिसहितका देवता मात्र देखिन्छ । उनका हजारौँ हातहरू र बहु शिरखण्ड पनि हाम्रो सामुन्नेमा एकै ढिक्का भएर हराउन पुग्छन् । विश्वरूपमा देखापर्ने एउटा अनौठो विशेषता यो पनि हो । यो सूक्ष्म छ, यसैले विशाल लाग्छ र विशाल भएर पनि सूक्ष्म छ ।*

सूक्ष्म छ, यसैले विशाल लाग्छ र विशाल भएर पनि सूक्ष्म छ । यस कुरालाई पुष्टि गर्ने एउटा उदाहरण सो जन्त्रमालाभित्रै नियालेर हेरौं न, त्यहाँ त भय र विश्वयुद्ध नै चलिरहेको छ । नियालेर नहेरिकन त्यो विश्वयुद्धको दर्शन कदापि मिल्दैन । त्यहाँ भूपतीन्द्र मल्लरूपि विश्वरूपको हृदयस्थल (छाती) छ जहाँसम्म उनले आत्ना सहस्र भुजाहरूमध्येका दुई मुख्य भुजा पुऱ्याएका छन् । ती भुजाका हत्केलाहरूमध्ये दायाँपट्टिको हत्केलामा एउटा सुन्दर रथमा सवार भई

---

६ अतल, वितल, सुतल, तलातल, महातल, रसातल र पाताल - यी सप्तपाताल हुन् जहाँ दैत्य, दानव, नाग लगायतका अनेक थरीका मायावी चरित्रका जीव बस्छन् भन्ने पौराणिक आख्यान छ । त्यसैगरी : भूलोक (भूर्लोक/पृथ्वीलोक), भुवर्लोक (ऋषिमुनिहरूको लोक), जनलोक (ब्रम्हाका सन्तानहरूको लोक), महर्लोक (सन्त महात्माहरूको लोक), सत्यलोक (देवताहरूको लोक), स्वर्लोक (इन्द्रलोक), तपलोक (अर्धदेव (बाँकी आधा मानव वा पशु)लोक) सप्तलोक हुन् र सप्तलोकको शिर्षमा मेरु/सुमेरु पर्वत छ र महाप्रलयसँगै ब्रम्हाण्डको पनि अन्त्य हुन्छ र पुनः अर्को विश्वको आरम्भ हुन्छ भन्ने पौराणिक आख्यान पनि चलेर आएको छ । ऋग्वेद लगायतका संहिताले लोकको अर्थ 'विश्व' भनेको छ । यसरी स्वर्ग, पृथ्वी र पाताल तीन लोक हुन् । माथि वर्णित सप्तपाताल+सप्तलोक चतुर्दश लोक/चौध भुवन हुन् भन्ने कुराको बोध हुन्छ । हाम्रो लौकिकजीवनमा कसैलाई 'तीन त्रिलोक चौध भुवन देखाइदिन्छु' भन्ने चलन आजसम्म पनि चली आएको छ । यसको प्रकारान्तर-तात्पर्य 'विश्वरूप( दर्शन' नै हो भन्ने कुरा विदित हुन्छ ।

अलिकता गहिरिएर हेरेको खण्डमा यहाँ विश्वरूपका सातजोर पाउ देखा पर्छन् । सातवटै पातालमा टेकेको दर्शाउन शायद त्यसरी सातजोर पाउ देखाइएको हो । शिरले आकाश छुन्छ, पाउले पाताल ।

७ बिगतका मानवस्पर्श, कोरकार, धूलो, धुवाँ, ओसले उप्किएका पाप्राहरू, सम्पदाको महत्त्वलाई नबुझ्नु र यसबारे जनचेतनाको अभाव आदि कारणले यो विश्वरूप मात्र नभएर यो दरबार लगायत मूलचोक, कुमारीचोक, लगायत भैरवचोकका अमूल्य भित्तेचित्रहरू समेत नराम्रोसित क्षत्‌विक्षत् हुनपुगेका छन् ।

८ गधा (श्वेत वर्ण), गरुड (रक्त), नृसिंह (श्वेत), बाँदर (रक्त), र बराह (नील) । यी पाँच भिन्न भिन्न जन्तुहरूको एकीकृत-शिरले पंचमुखी हनुमानको शिर बनेको हुन्छ । भक्तपुर दरबारको मूलचोक पस्ने पूर्वाभिमुख काष्ठनिर्मित प्रवेशद्वारको तोरणमुनि पंचमुखी हनुमानको सूक्ष्म मूर्ति छ । त्यसैगरी कुमारीचोकको उत्तर दलानमा पंचमुखी हनुमानकै सुन्दर प्रस्तरमूर्ति छ । यी सुन्दर र दुर्लभ कलाकृतिहरू जितामित्र मल्लले बनाउन लगाएका हुन् ।

अहिरावण राक्षसराज रावणका भाइ हुन् । कालाजादू समेत जान्ने मायावी एवं ज्यादै शक्तिशाली अहिरावणले त्यसको प्रयोग राम-रावण युद्धताका गरी राम र लक्ष्मणलाई पाताललोकमा लगी बन्धक बनाएर राखेका थिए । यसो हुँदा रामभक्त हनुमानले पंचमुख धारण गरी अहिरावणलाई मारे र राम लक्ष्मणलाई मुक्त गरे ।

रावणसित युद्ध गरिरहेका, रावणलाई मार्न ताकेर वाण चलाइरहेका रामको साक्षात् दर्शन मिल्छ । उनको आसपासमा सहायक देवीदेवताहरू सुस्पष्ट भएर देखा पर्न आउँछन् । नियालेर हेर्दामात्र देखिने यो सूक्ष्मचित्रको दर्शन मिलेपछि विश्वरूपको देहको यस भागमा वा दायाँपट्टि अनगिन्ती युद्धरत विशाल वानरसेना लगायत अन्य देवगण पनि सुस्पष्ट भएर हाम्रो सामुन्नेमा देखापर्न आउँछन् । त्यसैगरी विश्वरूपको बायाँपट्टिको हत्केलामा चार घोडाको रथमा सवार भइ रावण पनि रामसित युद्ध गरिरहेका छन् । त्यति सानो हत्केलाको सो सूक्ष्मचित्रमा समेत रावणका सूक्ष्मतम् दश शिर टड्कारो रूपमा देखिन्छ । अनि यसरी युद्धरत् रावणलाई देखेलगत्तै उनको पार्श्वमा उनलाई युद्धमा साथ दिइरहेका विशाल असुरसेना विश्वरूपको बायाँपट्टिको शरीरमा उस्तै गरी यत्रतत्र देखापर्छन् । यसरी राम र रावण आमुन्नेसामुन्ने भएर घमासान युद्ध गरिरहेका छन् । त्यसैगरी असुरसेना र वानरसेना बीचमा पनि उस्तै घमासान युद्ध चलिरहेको छ । युद्धको मारामारमा त्यहाँ अनगिन्ती असुरहरूका ढलेका शरीर, उछिट्टिएका टाउकाहरू र क्षत्विक्षत् लासहरू पनि देख्न सकिन्छ । यसरी राम-रावण युद्ध हाम्रो सामुन्नेमा सजीव भएर आउँछ । सो सूक्ष्मचित्रलाई हेर्दा यस्तो लाग्छ मानौं हामी भित्तेचित्र नभएर वास्तविक युद्धस्थलमै पुगेर सो युद्ध हेरिरहेका छौं । अनि हामीलाई यसो भन्न करै लाग्छ : विश्वरूपमा देखापर्ने यस्तो जीवन्त चित्रलाई चानचुने चित्रकारले उतार्न सक्तैन । विश्वरूपलाई गहिरिएर बुझी त्यसलाई मनमा बसालेर उच्चकोटिको कला सिर्जना गर्न सक्षम् विश्वश्रेणीका महान चित्रकारले बनाएको विश्वश्रेणीको भित्तेचित्र हो यो विश्वरूपको भित्तेचित्र ।

विश्वरूपको नाभिस्थानमा जलशयन विष्णुको अर्को सूक्ष्मचित्र देखापर्छ । ९ उनको नाभिबाट एउटा फक्रेको कमलपुष्प निस्केको छ । सो कमलपुष्पमाथि त्रिमूर्तिमध्येका एक, सृष्टिकर्ता र वेदहरूका रचयिता भनी मान्य रही आएका ब्रम्हा बसेका छन् । उनको वरपर मधु कैटभ आदि दैत्य दानवहरूले उनलाई आक्रामक रूपमा सताउन लागेका छन् । त्यसैगरी विश्वरूपको दायाँ काँधमा श्वेतवर्णका गणेश र बायाँ काँधमा रक्तवर्णका कुमार छन् । गणेश र कुमारको अवस्थितिले हामीलाई यस विश्वरूपमा शिवपरिवारको स्मरण गराएको छ । यो शिवपरिवारित शैव विश्वरूप हो भन्ने कुराको थप पुष्टि सो विश्वरूपको मूल पाउको माझमा देखापर्ने नन्दीकेश्वरको सूक्ष्मचित्रबाट पनि मिल्छ । नन्दीकेश्वरको यो अद्भुत चित्र हो । यिनको शिर साँढे र शरीर मानिसको रहेको छ । पिङ्गलवर्णका यी नन्दीकेश्वर उभिएको अवस्थामा छ । यिनको नन्दी-शिर तीन तहमा विभक्त छ । तीमध्ये पहिलो र दोस्रो तह पाँच पाँच शिरले युक्त छन् र शिर्षभागमा एक शिर मात्र छ । यसरी यी एघार शिरधारी नन्दीकेश्वरले हामीलाई एकादश रूद्रको स्मरण पनि गराएको छ । यिनको उपस्थितिले यो विश्वरूप 'नन्दीवाहन शिव विश्वरूप' हुन् भन्ने कुरा पनि जानिन्छ । १०

विश्वरूपको पृष्ठभूमि रातो छ जसको घेरा समेत अग्निज्वालावलीले युक्त छ । सो अग्निको मुस्लो गजुरमय रूपमा माथिसम्म उठेर गएको छ । आगोको मुस्लोसँगै माथितिर धुँवाको मुस्लो उडेर गएको छ । त्यसपछि कालो घेरा देखापर्छ जहाँ अनेक वर्णका नरमुण्डहरू मालाका रूपमा उनिएर रहेका छन् । ती नरमुण्डहरूको संख्या ८४ रहेको छ । बहुअर्थीय महत्व बोकेको यो संख्याले हामीलाई चौरासीलाख योनि, चौरासीसिद्धि लगायत चौरासी विकार



९ यस भागको चित्र पनि राम्रोसित नदेखिने भइसकेको छ ।

१० पौराणिक आख्यान अनुसार नन्दी शिवका वाहन मात्र नभएर शिव+शक्तिका साथमा लागेर सम्पूर्ण चराचर जीवजगत/ब्रम्हाण्डको सृष्टि भएको देख्ने एकमात्र प्रत्यक्षदर्शी साक्षी पनि हुन् ।

शिव नै एक यस्तो साम्य र गण चरित्र भएका देवता हुन् जो आफ्नो गणका साथमा ( नन्दी, भृङ्गी, भूत, प्रेत, पिशाच, डाकिनी, शाकिनी आदि) लाग्छन् जसको गणतान्त्रिक साम्य संसारमा उँच, नीच, सानो ठूलो कोही छैनन्, सबै समान छन् । सबै एकनासले आ-आफ्ना सत्कर्म गर्दै आखिर उनकै कोटिमा पुगेर 'ईश्वर' भएका छन् । यसैले भूत भूतेश्वर भएका छन् । भृङ्गी भृङ्गरेश्वर भएका छन् । खराब कर्मलाई त्यागेर असल कर्ममा लागेको हुँदा चण्डासुर पनि चण्डेश्वर भए । कहिल्यै महादेवलाई साथ नछाड्ने हाम्रा नन्दी पनि त त्यही कर्मले नन्दीकेश्वर भएका हुन् ।

लाई पनि संभ्फाएको छ । [११] यसरी यस विश्वरूपमा देखापर्ने ती अग्निज्वालावली, नरमुण्डहरू र धुँवाको मुस्लोका समन्वयात्मक क्रमतिर प्रतीक-दृष्टिले अर्थ गर्दा यस्तो पनि लाग्छ मानौँ परिवर्तन प्रकृतिको प्रधान नियम हो जसको प्रारम्भ शून्यबाट हुन्छ । र, सबथोक सिद्धिएपछि शून्य मात्र शेष रहन्छ । जहाँ अन्त्य छ सुरूवात पनि त्यहींबाट हुन्छ । 'महाप्रलय'को दार्शनिक सार शायद यही हो ।

विश्वरूपका पाउहरूको अवस्थालाई मध्यनजर गर्दै उनको मूल हात एवं मुहारका भावलाई समेत पनि विचार गर्दा यिनी नृत्यरत् मुद्रामा रहेको कुरा पनि चाल पाइन्छ । सो नृत्याभावले हामीलाई शिवको अत्यन्त प्रबल 'ताण्डव' नृत्यलाई सम्फाएको छ । शिव संगीत (गीत+वाद्य+नृत्य) का पनि देवता हुन् । नृत्यका प्रवर्त्तक भएकोले उनी 'नृत्यनाथ' कहलिएका हुन् । उनको ताण्डव नृत्यलाई सृष्टि, स्थिति र संहारको स्रोत मानिन्छ ।

भूपतीन्द्र मल्लरूपि शिव विश्वरूपका शक्ति (पार्वती) भएर रहेकी विश्वलक्ष्मी षोडशशृङ्गारले परिपूर्ण छिन् । श्वेतवर्णले खुलेको उनको उज्यालो मुहारलाई चिउँडोको कालो कोठी र निधारको रातो टीकाले थप सौन्दर्य प्रदान गरेको छ । यिनले आफ्ना मृगका समान सुन्दर आँखाले अथाह प्रेम र श्रद्धाभक्तिपूर्वक विश्वरूपलाई हेरिरहेकी छिन् । यो चित्र पनि यति सजीव लाग्छ कि यसलाई त्यसरी मनोहर रूपमा दर्शाउन सक्ने याछैंटोलका चित्रकारको जति प्रशंसा गरे पनि पुग्दैन । यिनले कानमा लगाएको सुनको 'तरिका' (बाटुलो गहनाविशेष), चुल्ठोमा सिउरेको चारपाते गहना, घाँटी नै टम्म हुनेगरी लगाएका अनेक कण्ठहार आदि आभूषणले पनि यिनको सुन्दरतामा वृद्धी गरी त्यसबखत चलेको राजसीशृङ्गार समेत दृष्टिगोचर हुन्छ । त्यसैगरी अर्को उल्लेख्य कुरा, यिनले बायाँ हातमा कलात्मक बुट्टा भएको एउटा पेटारो लिएकी छिन् । सो पेटारो लिएको हातको नाडीमा तिनले सुनको बाक्लो चुरा पनि लाएकी छिन् । तिनको त्यही चुरामाथि एक शिर, चार हात भएका नीलवर्णका भैरव बायाँ घुंडा टेकी फूर्तिलो ढङ्गले बसेका छन् । यस विश्वरूपमा देखापर्ने सूक्ष्मचित्रको यो पनि एक अनौठो नमुना भएर हाम्रो सामुन्नेमा देखापर्न आएको छ । यहाँनेर अर्को अनौठो र रोचक पक्ष के पनि छ भने भूपतीन्द्र मल्लको दायाँ बगलमा उस्तै सूक्ष्म रूपको, रक्तवर्णकी एक नवयौवना भैरवी बसेकी छिन् ।

शान्त र सौम्य रूपका शिवको भयानक रूप भैरव हो । भैरव उग्र तान्त्रिक देवता हुन् । भैरवी भैरवका शक्ति हुन् । यस विश्वरूपमा देखापर्ने यी भैरव+भैरवीले हामीलाई यो विश्वरूप जसरी शिवशक्तिमय छ, उसरी नै भैरवभैरवीमय पनि रहेछ र, यो जति शान्त र सौम्य छ उत्ति नै रौद्र रूपको रहेछ भन्ने कुरा पनि बोध हुन्छ ।

माथिका भैरवभैरवीले भैरवीचक्रलाई पनि सम्फाएको छ । तान्त्रिक साधकहरूको रहस्यमय संसारले मानव शरीर स्वयंलाई एक ब्रम्हाण्ड/विश्वको रूपमा मानी सोही अनुरूप 'चक्र' वा स्नायुचक्र/षट्चक्रचिन्तन,
यन्त्र -त्रिकोणचक्र, अष्टकोणचक्र, 'नाडी' (इडा,पिङ्गला, सुषुम्ना आदि ) लाई पनि शरीरमा प्रयोग गर्ने तान्त्रिक परम्परा चली आएको विदित हुन्छ । साधक स्वयंको शरीर पनि एक 'विश्वरूप' हो भन्ने कुराको तान्त्रिक प्रयोग यस विश्वरूपमा पनि भएको अनुभूत हुन्छ । जस्तै, हामीले माथि विश्वरूपको जन्त्रबारे चर्चा गर्‍यौं । त्यहाँ त्रिकोणमय तीन नेत्र छ । त्यहाँ एक पखेटावाल सिंहको मुखाकृति पनि छ । सो सिंहको नेत्र र जन्त्रको त्रिनेत्रको मेलले त्यहाँ अर्को त्रिकोणमय स्वरूप सिर्जना हुनपुगेको देखिन्छ । विश्वरूपको शरीरमा भइरहेको षटचक्रचिन्तनको प्रतीकात्मक दर्शन यहींबाट मिल्छ । विश्वरूपको दायाँपट्टि, घुँडानिर सिंह रहेको भाग 'इडा' र बायाँपट्टिको भागलाई 'पिङ्गला' तथा त्रिनेत्र रहेको भागलाई 'सुषुम्ना'को रूपमा मान्न सकिन्छ । जन्त्रको त्रिनेत्र चन्द्राकार आसनमा छ र सो त्रिनेत्रमाथि एकजोडी देवदेवी बसेका छन् । यस्तो चिन्ह र देवदेवी सुसुम्नाभागमा मात्र रहने परम्परा रहेको ज्ञात हुन्छ । सोही

भूपतीन्द्र मल्लरूपि शिव विश्वरूपका शक्ति (पार्वती) भएर रहेकी विश्वलक्ष्मी षोडशशृङ्गारले परिपूर्ण छिन् । श्वेतवर्णले खुलेको उनको उज्यालो मुहारलाई चिउँडोको कालो कोठी र निधारको रातो टीकाले थप सौन्दर्य प्रदान गरेको छ । यिनले आफ्ना मृगका समान सुन्दर आँखाले अथाह प्रेम र श्रद्धाभक्तिपूर्वक विश्वरूपलाई हेरिरहेकी छिन् ।

११ विचारले व्यवहार हुन्छ। जस्तो विचार छ, उस्तै हुन्छ। 'देवता', 'दानव', 'पशु', 'मानिस' विचारले नै हुन्छ। नकारात्मक विचार 'विकार' हो जसबाट राक्षसी प्रवृत्तिको जन्म हुन्छ। चौरासी बिकार राक्षसी प्रवृत्ति हो। त्यसको अन्त्यले धर्मको रक्षा हुन्छ, ईश्वरत्व प्राप्त हुन्छ। लौकिकजीवनमा चलेर आएको मान्यता पनि यही हो।

इडा पिङ्गला हुँदै माथि त्रिनेत्रमा पुग्दा दुई चर्मचक्षु बन्द हुन्छ र तेस्रो नेत्र खुल्छ । त्यो नेत्र खुलेपछि मात्र विश्वरूपको दर्शन हुन्छ भन्ने मान्यता दीक्षाधारी तान्त्रिक साधकहरूमा रहेको पाइन्छ ।

निष्कर्ष

पचपन्नझ्याले दरबारको विश्वरूप वैष्णव प्रभाव गौण भएको, शिवशक्ति-विश्वरूप हो । यस भित्तेचित्रका विश्वरूपबाट 'विश्वरूप' को परम्परा हाम्रो यहाँ कति प्राचीन रहेछ भनी फर्केर हेर्नुपर्दा हामीलाई आजभन्दा अन्दाजी चार हजार वर्ष अघिको वैदिकालमा पुग्नुपर्ने हुन्छ । वैदिक वाङ्मयमा आउने 'पुरूष' (ब्रम्हाण्ड-मानव) ले विश्वरूपको अवधारणा वैदिककालदेखि नै चलिआएको जानिन्छ । ऋग्वेदको पुरूषसूक्तमा वर्णित विराटपुरूष 'विश्वरूप' परम्पराका आदिपुरूष थिए । वैदिक देवताहरू ब्रम्हाण्डव्याप्त 'पुरूष' कै अंश थिए । जस्तै उनको मनले चन्द्रमा, लोचनले सूर्य र श्वासले हावा भए । उनकै देहबाट विश्वको रचना भयो । र, उनकै शिरबाट ब्राम्हण, बाहुबाट क्षेत्री, जाँघबाट वैश्य र पाउबाट शूद्रहरूको उत्पत्ति भयो । यसरी वर्णव्यवस्थाका मूल स्रोत पनि उनै पुरुष थिए । यिनका सहस्र शिर र सहस्र पाउ थिए ।

भागवतपुराण अनुसार सर्वोच्च देवता नारायणको प्रथम रूप 'पुरूष' थियो । यिनै पुरूष विश्वमा सबै प्रकारको सृष्टिका समेत आदि स्रोत थिए । पुरूषसूक्तका पुरूषले परमपुरूष 'पुरूषोत्तम' का रूपमा वैदिकदेवता नारायणको स्वरूपलाई स्मरण गराउँछ जो असंख्य शिर, हात र खुट्टाहरू भएका सर्वव्यापी 'विराट्पुरूष' थिए । यिनै पुरूषले 'प्रकृति' सहित भएर विश्वसृष्टिका आवश्यक तत्वहरूको रचना गर्छन् । महाभारतको भागवद्गीताका विष्णु-कृष्ण विश्वरूप यिनै 'विराट्पुरूष' बाट प्रेरित भएको दृष्टिगोचर हुन्छ । विष्णुको अवतारको रूपमा 'विश्वरूप'को वर्णन पाञ्चरात्र लगायत विष्णुधर्मोत्तर पुराणमा पनि आएको छ ।

वैदिककालदेखि चलिआएको यसको कर्मकाण्डीय परम्परा हाम्रो यहाँ आज पनि उस्तै छ । पुरूषसूक्तका विराट्पुरूषको प्रसङ्गमा यजुर्वेदमा आउने 'पुरूषमेध यज्ञ'ले पनि विश्वरूपको प्रारम्भिक अवधारणालाई सम्झाउँछ । विष्णु 'पुरूष' हो । विष्णुलाई प्रशन्न तुल्याउन गरिने गरिने यज्ञ यो थियो १२ ।

पचपन्नझ्याले दरबारको विश्वरूपको विशेषगरी एघार तहको शिरखण्डले प्रकारान्तरमा कर्मकाण्डीय यज्ञलाई पनि स्मरण गराएको छ जसमा पनि विश्वरूपको प्रतीकात्मक दर्शन मिल्छ । जस्तै, यज्ञमा चतुष्कोण ढाँचामा चार तहमा राखिने तरू/समिधा (विश्वरूपरूपि भूपतीन्द्र मल्ल 'पुरूष') र त्यसमाथि त्रिकोण ढाँचामा तीन तहमा राखिने तरू (शक्तिरूपिनी विश्वलक्ष्मी 'प्रकृति')ले समग्रमा सप्तलोक र त्यसपछि बलेको निगालोले तीनपल्ट घुमाउँदा तीन लोकको परिकल्पना हुन्छ । अन्त्यमा वा एघारौं क्रममा हुने अग्निस्थापन कर्म प्रकृति+पुरूषको समागमको चरमोत्मकर्ष हो जहाँबाट 'तीन त्रिलोक चौध भुवन'सहितको सृष्टि सम्भव हुन आउँछ । त्यहाँ हामीलाई विश्वरूपको दर्शन मिल्छ । यहाँ प्रकृति र पुरूषको समागमलाई लौकिक रतिलीलाको रूपमा नभएर तान्त्रिक कामकलाको रूपमा सम्य र शिष्ट तवरले दर्शाउन प्रकृतिरूपि विश्वलक्ष्मीलाई अतिभङ्ग मुद्रामा देखाइएको ज्ञात हुन्छ ।

> यिनै पुरूषले प्रकृति; सहित भएर विश्वसृष्टिका आवश्यक तत्वहरूको रचना गर्छन् । महाभारतको भगवद्गीताका विष्णु-कृष्ण विश्वरूप यिनै विराट्पुरूष; बाट प्रेरित भएको दृष्टिगोचर हुन्छ । विष्णुको अवतारको रूपमा विश्वरूप;को वर्णन पाञ्चरात्र लगायत विष्णुधर्मोत्तर पुराणमा पनि आएको छ ।

प्राचीनकालदेखि नै नेपाली कलाको विषयवस्तु मूल तः धार्मिक नै रही आएको छ चाहे त्यो हिन्दू होस् वा बौद्ध । मूर्तिकला र चित्रकलामा अन्य देवताहरूका तुलनामा विश्वरूपको दर्शन विरलैमात्र मिल्छ । त्यसमा पनि शिवशक्ति विश्वरूप पाउन त झनै दुर्लभ छ । पचपन्नझ्याले दरबारको विश्वरूप भित्तेचित्रको विरलाकाटि नमुना हो । नेपालमा हालसम्म प्राप्त विश्वरूपको सर्वप्राचीन मूर्ति चाबहिल, कुटुबहालको विष्णु विश्वरूपको मूर्ति (ईस्वी तेस्रो

१२ http://en.wikipedia.org/wiki/Purushamedha

शताब्दी) देखिन आएको छ । विश्वरूपको यति प्राचीन मूर्ति भारतमा पनि भेटिएको छैन । १३ यस अघि चाँगुनारायणको विष्णु विश्वरूपको मूर्ति (ईस्वी सातौं शताब्दी) मात्र ज्ञात थियो । अब यो विश्वरूपको दोस्रो प्राचीन मूर्ति हुन आएको छ ।

सहस्रभुज लोकेश्वर बौद्ध विश्वरूप हो । भक्तपुर दरबारक्षेत्रमा तधिछैं बहा/चतुब्रम्ह महाविहार छ । यस विहारका टुँडालहरूमध्येको एउटा टुँडालमा ने.सं. ६०२ उत्कीर्ण छ । यसको उल्लेख लकले गरेका छन् १४। यताबाट यो विहारको निर्माण ने.सं. ६१० (इस्वी १४९०) मा भएको देखिन्छ । यस विहारको उत्तराभिमुख मूलप्रवेशद्वारमाथि कलात्मक काष्ठतोरण छ । सो तोरणका मुख्यदेवता सहस्रभुज लोकेश्वर (विश्वरूप) हुन् । यसरी मूर्तिकला र चित्रकलामा बौद्ध विश्वरूपको प्रयोग विशेषगरी पूर्वमध्यकालको उत्तरार्द्धदेखि बढेर आएको विदित हुन्छ । सहस्रभुज लोकेश्वर (विश्वरूप)का पौभाःचित्रहरू (इस्वी उन्नाइसौं शताब्दी) पनि प्राप्त छन् । छाउनीस्थित राष्ट्रिय संग्रहालय र कनकचैत्य महाविहारका सहस्रभुज लोकेश्वरहरू उदाहरणस्वरूप छन् १५।

चित्रकलामा विश्वरूपलाई खोज्दै जाँदा पालले प्रकाशमा ल्याएको गुह्यकालीको पौभाःचित्र (इस्वी सत्रौं शताब्दी) माथि पनि ध्यान गएको छ १६। पालले यस पौभाःचित्रमा 'गुह्यकाली' मात्र देखेका छन, सो नृत्यरत् गुह्यकालीको चार पाउ, नौ तहको शिर, सहस्रभुजालाई देखेर पनि तिनको 'विश्वरूप' लाई देख्नबाट भने उनी वञ्चित भएका छन् । यथार्थमा यो गुह्यकाली-विश्वरूप हो । शक्ति विश्वरूपको एउटा दुर्लभ नमुना हो । तान्त्रिक साधकहरू काली र कृष्णमा भेद गर्दैनन्, गरेमा रौरव नरकमा पर्छ भन्दै काली नै स्वयं भगवान् कृष्ण हो भन्ने मान्यता राख्छन् । यसो हुंदा जस्तो विष्णु-कृष्ण विश्वरूप, उस्तै 'काली विश्वरूप' पनि चलेको कुरा जानिन्छ । शक्ति विश्वरूपको एउटा अर्को दुर्लभ ग्रन्थचित्र (उन्नाइसौं शताब्दीको उत्तरार्द्ध) पालले प्रकाशमा ल्याएका छन् १७।

तान्त्रिक पुजा अनुष्ठानमा देवदेवीका 'विश्वरूप' र 'कामरूप' (कामकला) गरी दुई विशेष रूप प्रचलित रही आएको जानिन्छ । जसरी अर्जुनरूपि भक्तहरूले विष्णु-कृष्ण विश्वरूपको दर्शन गर्छन्, त्यसरी नै शाक्तहरू गुह्यकाली विश्वरूपको । पुजा अनुष्ठानमा लौकिक विधि बाह्य पक्ष हो भने मानसपुजा विशेष हो । मनले जे मान्छ उही हुन्छ । पचपन्नझ्याले दरबारको शिवशक्ति विश्वरूप 'कामकला' पनि हो । यस अर्थमा पनि यसलाई सबै पक्षले परिपूर्ण भएको सम्पूर्ण( विश्वरूप हो भनी मान्न सकिन्छ । भूपतीन्द्र मल्ल+विश्वलक्ष्मीलाई त्यस रूपमा लौकिक दुनियाँले दर्शन गर्दै आएका छन् । १८



१३ लैनसिंह बाङ्देल, प्राचीन नेपाली मूर्तिकलाको इतिहास, नेपाल राजकीय प्रज्ञा-प्रतिष्ठान, काठमाडौं : २०३९, पृष्ठ १२१-१२२ । 'नेपालले कहिलेकाहीं भारतीय कलामा पनि नभएको विचित्र, नौलो र आफ्नै किसिमका मूर्तिहरू प्रस्तुत गरेको देखिन्छ । यस्तै एउटा उदाहरण चाबहिलनजीकै कुटुबहालको विश्वरूप विष्णुको मूर्ति हो ।'

१४ John K.Locke, Buddhist Monastriies of Nepal, Sahayogi Press, Kathmandu: 1985 A.D., pp.449.

१५ Min Bahadur Shakya, Sacred Art of Nepal, Handicraft Association of Nepal, Kathmandu: 2000 A.D., pp.87-91, plate no.22, 23.

१६ Pratapaditya Pal, Nepal: Where the Gods Are Young, The Asia Society, Los Angeles: 1975, pp. 12, 104-5, 130. नेपालबाट विदेशका संग्रहालयहरूमा सजिन पुगेका अनगिन्ती दुर्लभ सम्पदाहरूमध्येको एउटा यो पनि रहेछ । यो हाम्रो लागि दुःखको कुरा हो । अरुको देशबाट आफ्नो देशमा सुटुक्क ल्याएर सजाएका यस्ता सम्पदाले कुनै पनि देशको शान बढ्दैन, भएको मान समेत जान्छ भन्ने कुरालाई बुझ्नुपर्छ र ससम्मान त्यो देशमा फिर्ता गर्नुपर्छ । हाम्रो सरकारले पनि चूप लागेर बस्ने होइन, त्यस्ता सम्पदा फिर्ता ल्याउन सशक्त पाइला चाल्न हतार भइसकेको छ । सम्पदा संस्कृति हो । संस्कृतिले देशको पहिचान हुन्छ । संस्कृति छैन भने देश पनि रहन्न भन्ने कुरालाई बिर्सनु हुन्न ।

१७ Pratapaditya Pal, Art of Nepal, Los Angeles County Museum of Art, Los Angeles: 1985, pp.179. यो दुर्लभ सम्पदा पनि उहिल्यै विदेशमा पुगिसकेको रहेछ ।

१८ वास्तुकला होस् वा चित्रकला, परम्परित कलाकृतिको निर्माणपछि त्यसलाई शोभाको निमित्त मात्र नभएर धार्मिकजीवनसित समेत सांस्कृतिकीकरण गर्दै जीवन्त तुल्याइराख्ने संस्कृति नेपाली संस्कृति हो । यस कुराको एउटा उत्कृष्ट उदाहरण विश्वरूपको यो भित्तेचित्र

काली कृष्ण हो भने कृष्ण शिव हो । र, शिव पनि कृष्ण हो । कृष्णलाई शिव नभै हुंदैन । शिवलाई पनि कृष्ण नभै हुंदैन । कृष्णले सदाकाल धारण गर्ने वस्तु 'वंशी' हो । यसको विपरित उच्चारणले 'शिवं' को दर्शन हुन्छ । त्यस्तै जटाधारी शिवको जटाबाट सदाकाल बहने गङ्गाको 'धारा' हो । यसको विपरित उच्चारणमा 'राधा' को दर्शन मिल्छ । यस दृष्टिले हामीलाई पचपन्नझ्याले दरबारको विश्वरूपमा शिव+शक्ति मात्र नभएर शिव+कृष्ण हुँदै राधा+कृष्णको विलक्षण दर्शन पनि मिल्छ । यही कृष्णचरित्र हो । यदि त्यसो नहुंदो हो त यो विश्वरूपको भित्ताका चारैतिर कृष्णचरित्र कथामा आधारित भित्तेचित्रहरू पनि हुने थिएनन् । त्यहाँ कृष्णजन्मदेखि परलोकगमनसम्मका अनेक चित्रहरू छन् । यहाँ कृष्णलीला छ यसैले शिवलीला पनि छ । यदि त्यसो नहुँदो हो त कृष्णचरित्रमा आधारित भित्तेचित्रहरूका हृदयमाभमा शिवशक्ति विश्वरूपको भित्तेचित्र पनि बस्न आउने थिएन । जस्तो राधाकृष्ण उस्तै शिवशक्ति । जस्तो प्रकृति उस्तै पुरूष । शक्तिको साथले सबै पुरूष शिव हुन पाएका छन्, नत्र सबै पुरूष शव भइसक्ने थिए । धर्म, कर्म र कलाको अनुपम मेलले सिर्जित यस विश्वरूप-भित्तेचित्रको यो जस्तो बेजोड नमुना यो विश्वमा अरू कै नै हुनसक्छ र, हामीले माथि पनि भन्यौ कि जस्तो भावले यसलाइ हेरिन्छ, उस्तै दर्शन मिल्छ । यसलाई हेर्दा यस्तो पनि लाग्छ मानौं यहाँ हिजो जस्तो अधर्म पनि थिएन, अधर्मलाई नाश गर्दागर्दै पनि अधर्मले टाउको उठाउला कि भनी धर्मले रक्षा गरिरहेको, तर पनि अधर्मले लखेटिरहेको वर्तमान लिएर भोलिको सत्ययुग ल्याउन महाप्रलयकै लक्षतिर लम्किरहेको जस्तो ! कति अथाह र अनन्त लाग्दो छ यो विश्वरूप ! मेरो मनको कुरा गर्ने हो भने पनि यस्तो प्रतीत हुन्छ मानौं त्यो दिव्य भित्तामा म विश्वरूपरूपि एउटा भव्य ऐना हेरिरहेको छु जहाँ यस विश्वका अरू मानिसले जस्तै मैले पनि मेरो प्रतिबिम्ब देख्न सक्छु । यस्तो लाग्छ त्यो विश्व अवास्तविक नभएर वास्तविक छ । त्यो मेरै विश्व हो जहाँ म स्वयं विश्वरूप हुं । हिजो मेरो जन्म भयो, आजसम्म जीवितै छु । अनि भोलि काल आएपछि अवश्य मर्छु । मेरो यो सृष्टि, स्थिति र संहारको परिवर्तनीय चरित्रलाई मात्र हेर्दा पनि यस्तो लाग्छ ब्रम्हा+विष्णु+महेश्वर म स्वयं हुं । मेरो न कुनै आरम्भ छ न त अन्त्य नै । चक्र जस्तो अनन्तकालदेखि आजसम्म पनि उस्तै घुमिरहेको छु । ...सत्कर्म धर्म हो, कुकर्म अधर्म हो । लाग्छ म भित्र र मेरो संसारमा पनि धर्म (असल) र अधर्म/पाप (खराब) बिच अनन्तकालदेखि नै अन्त्यहीन लाग्ने युद्ध चलिरहेको छ र त्यो पनि विश्वयुद्ध नै हो, चाहे त्यो रामायणकालीन राम रावणरूपि विश्वयुद्ध होस् वा महाभारतकालीन वा अहिलेको आधुनिक युगका विश्वयुद्धहरू ! ... त्यो भित्ताको विश्वरूप, जति सूक्ष्म छ उति नै विशाल, विश्वव्यापि !

शरीरले म 'पशु' हुं । विचार, संस्कार र व्यवहारले म 'मानिस' भएको छु । मैले मेरो मात्र नभएर सबैको भलो गर्नु पर्छ, 'म'

*यहाँ कृष्णलीला छ यसैले शिवलीला पनि छ । यदि त्यसो नहुँदो हो त कृष्णचरित्रमा आधारित भित्तेचित्रहरूका हृदयमाभमा शिवशक्ति विश्वरूपको भित्तेचित्र पनि बस्न आउने थिएन । जस्तो राधाकृष्ण उस्तै शिवशक्ति । जस्तो प्रकृति उस्तै पुरूष । शक्तिको साथले सबै पुरूष शिव हुन पाएका छन्, नत्र सबै पुरूष शव भइसक्ने थिए ।*

होइन 'हामी' भएर विश्वरूप जस्तै एकीकृत शक्ति भएर लाग्नुपर्छ अनि मात्र सारा विश्वको कल्याण हुन्छ । मेरो यो विचार र चरित्रले म मानव हुं । यसैले मेरो धर्म मानवधर्म हो । परिवार, इष्टमित्र, बन्धुबान्धव, मायामोह इत्यादि क्षणिक 'कारण' मात्र हुन् । त्यहाँ त 'धर्म' र 'अधर्म' मात्र छन् एउटै सिक्काका दुई पाटा जस्तै । अधर्मले म राक्षस हुन्छु , धर्मले त म मानिस मात्र नभएर देवता पनि हुनेछु । यसैले लाग्छ, मानिस, देवता र दानव म भित्रै छ । संघर्षमय मेरो संसारमा एकातिर युद्ध र मृत्यु छ भने अर्कोतिर प्रेम र जीवन पनि छ, त्यो भित्ताको भूपतीन्द्र मल्ल र विश्वलक्ष्मी जस्तै । हिजोको मात्र नभएर आजको विश्वसित पनि उत्तिकै समकालीन रही आएको छ यो विश्वरूप । जीवन्त रीतले सदाकाल चलिरहेको अनन्त विश्वरूप । लाग्छ, विश्वको ऐना हो यो विश्वरूप ...

---

पनि हो । यो विश्वरूप केवल शोभाको निमित्त मात्र नभएर यसको निर्माणपश्चात् त्यसमा तान्त्रिक विधिपूर्वक विश्वरूपको 'देवत्व' पनि प्राण-प्रतिष्ठा गरी देवताकै रूपमा दर्शनपुजन गर्ने परम्पराको पनि आरम्भ भएको थियो । सोही दरबारपरिसरस्थित इपाछेँटोलका विनोदराज शर्मा (६१) का अनुसार विगतमा सो विश्वरूपको भित्तेचित्र सामुन्नेको भुइँमा लिपपोत गरी तान्त्रिक विधि बमोजिम पुजा गरिन्थ्यो । भित्तेचित्र मात्र नभएर ग्रन्थचित्र लगायत पौभाचित्रहरू पनि सोही अभिप्रायले बनाउने चलन रहेको विदित हुन्छ । शर्माका अनुसार भक्तपुर राजदरबारको मूलचोकको चारैतिरका भित्ताहरूमा केही दशकअघि सम्म पनि दशैंको कालरात्रि, कुमारषष्ठी, गणेश चतुर्थी आदि पर्वताका चोकका पूरै भित्ता नै ढाकिनेगरी सम्बद्ध देवीदेवताका ठूलठूला पौभाचित्रहरू झुण्ड्याएर राख्ने चलन थियो । तर त्यो चलन पनि हराइसकेको छ । पौभाचित्र झुण्ड्याउन ठोकिइराखिएका पुराना कीलाहरू भने आज पनि चारैतिर देख्न सकिन्छ ।

विश्वश्रेणीको यो विश्वरूपलाई पहिले मनको भित्तामा उतारिसकेपछि मात्र यो दरबारको भित्तामा त्यसरी जीवन्त रूपमा उतार्ने सक्ने विश्वश्रेणीका महान कलाकार - याछैंटोलका चित्रकार । यदि यो भित्तेचित्र यो दरबारको भित्तामा नभएर पाश्चात्य देशका कुनै दरबार वा फ्रान्सको लुभ्र दरबारको कुनै भित्तामा हुंदो हो त यसका सामु विश्वश्रेणीका अन्य विश्वप्रसिद्ध ठानिएका चित्रहरू पनि फिक्का पर्थे होलान् । त्यता सानो कुराको सिर्जनामा पनि विश्वव्यापि प्रचार हुने गर्छ । यता हाम्रोमा विश्वश्रेणीकै उत्कृष्ट कलाको सिर्जना हुँदा पनि बाहिरी विश्वको त कुरै छाटौं, हामी मध्येमै पनि कतिलाई त पत्तो पनि हुँदैन । हाम्रो पचपन्नझ्यालेदरबारको यो विश्वरूप जस्तो । सारा विश्वले देखेर पनि चिन्न नसकेको विश्वरूप .........।



मेरो यो विचार र चरित्रले म मानव हुँ । यसैले मेरो धर्म मानवधर्म हो । परिवार, इष्टमित्र, बन्धुबान्धव, मायामोह इत्यादि क्षणिक 'कारण; मात्र हुन् । त्यहाँ त 'धर्म; र 'अधर्म; मात्र छन् एउटै सिक्काका दुई पाटा जस्तै । अधर्मले म राक्षस हुन्छु , धर्मले त म मानिस मात्र नभएर देवता पनि हुनेछु । यसैले लाग्छ, मानिस, देवता र दानव म भित्रै छ । संघर्षमय मेरो संसारमा एकातिर युद्ध र मृत्यु छ भने अर्कोतिर प्रेम र जीवन पनि छ, त्यो भित्ताको भूपतीन्द्र मल्ल र विश्वलक्ष्मी जस्तै ।

